# होटेल व्यवस्था तथा मदिराको बिक्री वितरण (नियन्त्रण) ऐन, २०२३

लालमोहर र प्रकाशन मिति

२०२३।६।९

संशोधन गर्ने ऐन

न्याय प्रशासन ऐन, २०४८ २०४८।२।१६

## २०२३ सालको ऐन नं. १८

## होटेलको व्यवस्था तथा मदिराको बिक्री वितरणमा नियन्त्रण गर्न बनेको ऐन

**प्रस्तावना** : सर्वसाधारण जनताको सदाचार, सुविधा, स्वास्थ्य एवं आर्थिक हित कायम राख्नको लागि होटेलको व्यवस्था तथा मदिराको बिक्री वितरणमा नियन्त्रण गर्न वाञ्छनीय भएकोले,

श्री ५ महाराजाधिराज महेन्द्र वीर विक्रम शाहदेवबाट राष्ट्रिय पञ्चायतको सल्लाह र सम्मतिले यो ऐन बनाई बक्सेको छ ।

१. **संक्षिप्त नाम, विस्तार र प्रारम्भ** : (१) यस ऐनको नाम "होटल व्यवस्था तथा मदिराको बिक्री वितरण (नियन्त्रण) ऐन, २०२३" रहेको छ ।

(२) यो ऐन नेपालभर लागू हुनेछ ।

(३) यो ऐन तुरुन्त प्रारम्भ हुनेछ ।

२. **परिभाषा** : विषय वा प्रसङ्गले अर्को अर्थ नलागेमा यो ऐनमा,-

(क) "होटेल" भन्नाले भोजन (खानापिना) को प्रबन्ध भई वा नभई बसोबासको सुविधा दिने गरी व्यावसायिक आधारमा चलाइएको होटेल सम्झनु पर्छ र यो शब्दले रेष्टुराँ समेतलाई जनाउँछ ।

(ख) कुनै होटेल वा पसलका सम्बन्धमा "मालिक" भन्नाले होटेल वा पसलको कारोबारमा अन्तिम नियन्त्रण भएको व्यक्तिहरु सम्झनु पर्छ र यो शब्दले त्यस्तो होटेल वा पसलको काम चलाउन मैनेजर वा मैनेजिङ एजेण्ट नियुक्त भैराखेको भए निजलाई समेत जनाउँछ ।

(ग) "ग्राहक" भन्नाले होटेलमा बसोबास गरी वा नगरी भोजन (खानापिना) को लागि होटेलमा आउने ग्राहक सम्झनु पर्छ ।

(घ) "मदिरा" भन्नाले फलफूल वा अन्न कुहाई वा अन्य कुनै तरीकाले तयार गरिने विदेशी वा स्वदेशी सबै किसिमको रक्सी र वियर समेतलाई सम्झनु पर्छ ।

(ङ) "पसल" भन्नाले भट्टी पसललाई समेत जनाउँछ ।

(च) "तोकिएको" वा "तोकिएबमोजिम" भन्नाले यस ऐन अन्तर्गत बनेको नियमहरुमा तोकिएको वा तोकिएबमोजिम सम्झनु पर्छ ।

३. **<u>होटेल वा पसलको मालिकले मदिरा बेच्न र खुवाउनमा नियन्त्रण</u>** : (१) मदिरा खुवाउने व्यवस्था भएको होटेल वा पसलको मालिकले यो ऐन प्रारम्भ भएपछि दिउँसो १२ बजे भन्दा पहिले र शुक्रबारको हकमा राती १ बजे पछि र अन्य वारको हकमा राती १२ बजे पछि आफनो होटेल वा पसलमा कसैलाई मदिरा बिक्री गर्न वा खुवाउन हुँदैन ।

(२) होटेल मालिकले शुक्रवारको दिन राती १ बजे पछि र अन्य वारको हकमा राती १२ बजेपछि ग्राहकहरुको निमित्त मनोरञ्जन वा नाच गानको व्यवस्था गर्न हुँदैन ।

(३) उपदफा (१) र (२) मा जुनसुकै कुरा लेखिएको भए तापनि नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशित गरी सो उपदफाहरुमा लेखिएको समयमा आवश्यकता अनुसार घटबढ गर्न सक्नेछ ।

४. **<u>होटेलमा अश्लील वा लज्जाजनक मनोरञ्जन वा नाच गान देखाउन नहुने</u>** : होटेल मालिकले आफनो होटेलमा सार्वजनिक सदाचार वा नैतिकतामा नराम्रो असर पर्ने किसिमका मनोरञ्जन वा त्यस्ता नाच गान देखाउन हुँदैन ।

५. **<u>होटेल मालिकको कर्तव्य</u>** : (१) होटेल मालिकको देहाय बमोजिमको कर्तव्य हुनेछ :-

(क) होटेलमा आएका ग्राहकको नाम, नागरिकता, पेशा, आएको मिति र ठेगाना समेतको विवरण लेखाउने ।

(ख) होटेलमा कोठा खाली भएमा सरुवा वा संक्रामक रोग पीडित ग्राहक बाहेक अरु ग्राहकलाई बस्न दिनु पर्ने ।

(ग) होटेलमा आएका ग्राहकलाई मुनासिब माफिकको दाममा शुद्ध तथा पवित्र भोजन खुवाउने ।

(घ) ग्राहकलाई आफूले सक्दो सुरक्षा वा हेर विचार गर्ने, गराउने ।

(ङ) ग्राहकको मालसामान नगद रुपैयाँ वा अरु कुनै मूल्यवान चीज ग्राहकले जिम्मा दिन चाहेमा ग्राहकले माँग गरेको बखतमा फिर्ता दिने गरी आफनो जिम्मा लिई त्यसको रसीद दिने ।

(च) मदिरा बेच्दा वा खुवाउँदा शान्ति सुरक्षाको ख्याल गर्ने ।

(छ) होटेल साफ सुग्घर राख्न लगाउने ।

(ज) ग्राहकलाई मदिरा खुवाउँदा होस हवास हराउने गरी वा ग्राहकले आफूलाई नियन्त्रण राख्न नसक्ने गरी धेरै मात्रामा मदिरा खुवाउन नहुने ।

(झ) मदिरा खुवाउँदा होटेलको भित्री भागमा खुवाउने व्यवस्था गर्ने ।

(२) उपदफा (१) को खण्ड (ङ) बमोजिम जिम्मा लिएको मालसामान दैवी घटनाबाट नासिएमा त्यस्तो मालसामानको जवाफदेही होटेल मालिकको हुने छैन ।

६. **ग्राहकको मालसामान लिलाम गर्ने** : ग्राहकले होटेलमा बस्दा र खाँदाको खर्च नतिरी आफनो मालसामान छोडी हिंडेमा त्यसरी हिंडेको मितिले ७ दिन पछि त्यस्ता मालसामानको विवरण र ग्राहकको पूरा नाम र वतन खोली पैंतीस दिनको म्याद दिई स्थानीय पत्रपत्रिकामा विज्ञापन गरी होटेल मालिकले सो मालसामान लिलाम बिक्री गर्न सक्नेछ र सो लिलाम बिक्री गर्दा आएको रकमबाट आफूले लिनु पर्ने रकम र लिलाम बिक्री गर्दा लागेको खर्च कटाई बाँकी बचेको रकम ग्राहकले लिन आएका बखत निजलाई बुझाई दिनु पर्छ ।

७. **नाबालक र मदिराले मातेको व्यक्तिलाई मदिरा बेच्न खुवाउन नहुने** : १६ वर्ष मुनिका नाबालक र मदिराले मातिसकेका व्यक्तिलाई कुनै पनि होटेल वा पसलको मालिकले मदिरा बेच्न वा खुवाउन हुँदैन ।

८. खास खास होटेल वा पसल र क्षेत्रमा मदिरा बेच्न र खुवाउन नहुने : दफा ३ मा जुनसुकै कुरा लेखिएको भए तापनि नेपाल सरकारले आवश्यक ठानेमा नेपाल राजपत्रमा सूचना प्रकाशित गरी सोही सूचनामा तोकेको होटेल, पसल वा क्षेत्रमा मदिरा बेच्न र खुवाउन निषेध गर्न सक्नेछ ।

९. **मदिरा खाई मातेको ग्राहकलाई प्रवेश निषेध** : कुनै होटेल वा पसलको मालिकले मदिरा लागी मातेका व्यक्तिलाई जानी जानी आफनो होटेल वा पसलमा प्रवेश गराउन हुँदैन ।

१०. **दण्ड सजाय** : (१) दफा ३, ५ वा ७ को बर्खिलाप काम गर्ने होटेल मालिक वा दफा ३ वा ७ को बर्खिलाप काम गर्ने कुनै पसलको मालिकलाई तोकिएको अधिकारीले बढीमा रु. ५,०००।- पाँच हजारसम्म जरिवाना गर्न र आवश्यक देखिए त्यस्तो होटेल वा पसल बन्द गर्ने आदेश दिन सक्नेछ ।

(२) दफा ४ को बर्खिलाप काम गर्ने होटेल मालिकलाई तोकिएको अधिकारीले रु. ५,०००।- पाँच हजारसम्म जरिवाना गर्न सक्नेछ र सो दफाको बर्खिलाप होटेलमा भैरहेको वा हुने भएको मनोरञ्जन वा नाच गान बन्द गराउनेछ ।

(३) दफा ८ वा ९ को उल्लंघन गर्ने होटेल वा पसलको मालिक वा अन्य कुनै व्यक्तिलाई तोकिएको अधिकारीको आदेशले बढीमा ३ महीनासम्म कैद वा रु.१,०००।- एक हजारसम्म जरिवाना वा दुवै सजाय हुन सक्नेछ ।

११. **पुनरावेदन** : दफा १० बमोजिम दिइएको सजायमा चित्त नबुझ्ने व्यक्तिले सो सजायको आदेश उपर [?]पुनरावेदन अदालतमा पुनरावेदन गर्न सक्नेछ ।

१२. **नियम बनाउने अधिकार** : यो ऐनको उद्देश्य कार्यान्वित गर्न नेपाल सरकारले नियम बनाउन सक्नेछ ।

१३. **बचाउ** : यो ऐन र यस ऐन अन्तर्गत बनेका नियमहरुमा लेखिएको जति कुरामा सोही बमोजिम र अरुमा प्रचलित नेपाल कानून बमोजिम हुनेछ ।

---

[?] न्याय प्रशासन ऐन, २०४८ द्वारा संशोधित ।

**द्रष्टव्य**: केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६३ बमोजिम रूपान्तर भएका शब्दहरू-
"श्री ५ को सरकार" भन्ने शब्दको सट्टा "नेपाल सरकार" ।